# **आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु (बिक्री वितरण नियन्त्रण) ऐन, २०४९**

लालमोहर र प्रकाशन मिति

२०४९।८।२९

**२०४९ सालको ऐन नं. ३९**

आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तुको बिक्री वितरण नियन्त्रण गर्न बनेको ऐन

प्रस्तावना : स्तनपानको संरक्षण र सम्वर्द्धन तथा आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु लगायत बाल आहारको बिक्री वितरणलाई नियमित गरी बच्चाहरुको लागि सुरक्षित एवं पर्याप्त पोषणको व्यवस्था गर्न वान्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको शासनकालको एक्काइसौं वर्षमा संसदले यो ऐन बनाएकोछ ।

१. **संक्षिप्त नाम र प्रारम्भ** :

(१) यस ऐनको नाम "आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु (बिक्री वितरण नियन्त्रण) ऐन, २०४९" रहेकोछ ।

(२) यो ऐन नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकेको मिति देखि प्रारम्भ हुनेछ ।♣

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु" भन्नाले आमाको दूधलाई आंशिक वा पूर्ण रुपमा प्रतिस्थापन गर्न बिक्री वितरण गरिएको खाद्य वस्तु सम्झनु पर्छ ।

(ख) "भाँडो (कण्टेनर)" भन्नाले कुनै उत्पादन खुद्रा इकाईको रुपमा बिक्रीको लागि प्रयोग हुने कुनै पनि किसिमको "पोका (प्याकेज)" सम्झनु पर्छ र सो शब्दले बेरबार पार्ने वस्तु ( र्‍यापर्स) लाई समेत जनाउँछ ।

(ग) "समिति" भन्नाले दफा ४ बमोजिम गठित स्तनपान संरक्षण तथा सम्वर्द्धन समिति सम्झनु पर्छ ।

(घ) "उत्पादन" भन्नाले देहायको कुनै चीज वस्तु सम्झनु पर्छः-

(१) आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु,

---

♣ यो ऐन २०५१।११।१५ देखि लागु हुनेगरी नेपाल राजपत्रमा सूचना प्रकाशित भएको ।

(२) कुनै परिवर्तन सहित वा विना परिवर्तन बच्चालाई खुवाउन प्रयोग गर्नेमा अनुकूल हुने गरी बिक्री वितरण गरिएको कुनै पनि प्रकारको दूध,

(३) बच्चालाई खुवाउन अनुकूल हूने गरी बिक्री वितरण गरिएको अन्य कुनै खाद्य वा पेय पदार्थ,

(४) दूधदानी र मुन्टो ।

(ङ) "वितरक" भन्नाले कुनै उत्पादन, थोक वा खुद्रा रुपमा बिक्री वितरण गर्ने कार्यमा संलग्न व्यक्ति सम्झनु पर्छ र सो शब्दले कुनै उत्पादन सम्बन्धी जनसम्पर्क सेवा वा सूचना उपलब्ध गराउने कार्यमा संलग्न व्यक्तिलाई समेत जनाउँछ ।

(च) "स्वास्थ्य हेरचाह गर्ने निकाय" भन्नाले स्वास्थ्य हेरचाह गर्ने कार्यमा प्रत्यक्ष वा अप्रत्यक्ष रुपमा संलग्न सरकारी, गैर सरकारी वा निजी संस्था वा संगठन वा व्यक्ति सम्झनु पर्छ र सो शब्दले नर्सरी (बालगृह) र अन्य बाल हेरचाह संस्थाहरुलाई समेत जनाउँछ ।

(छ) "स्वास्थ्य व्यवसायी" भन्नाले चिकित्सक, दर्तावाला नर्स वा पोषणविज्ञ वा नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकी दिएको यस्तै अन्य व्यक्तिहरु सम्झनु पर्छ ।

(ज) "स्वास्थ्य कार्यकर्ता" भन्नाले स्वास्थ्य हेरचाह गर्ने निकायमा काम गरिरहेको वा काम गर्न तालीम लिई रहेको र स्वास्थ्य हेरचाह गर्ने कार्यमा संलग्न पारिश्रमिक लिने वा नलिने व्यक्ति सम्झनु पर्छ ।

(झ) "बच्चा" भन्नाले बाह्र महीना सम्मको उमेरको शिशु सम्झनु पर्छ ।

(ञ) "बालसूत्र" भन्नाले चार देखि छ महीनासम्मको उमेरका बच्चाहरुको सामान्य पोषण आवश्यकता पूर्ति गर्ने उद्देश्यले तथा त्यस्ता बच्चाहरुको शारीरिक बनौटलाई मिल्ने गरी प्रचलित नेपाली गुणस्तर अनुरुप तयार गरिएको आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु सम्झनु पर्छ ।

(ट) "लेवल" भन्नाले उत्पादन राखिएको भाँडोमा लेखिएको, छापिएको, लिथो गरिएको, चिन्ह लगाईएको, इम्बोर्स गरिएको, समावेश गरिएको वा अन्य किसिमले देखाईएको ट्याग, चिन्ह, तस्वीर वा अन्य विवरणात्मक वस्तु सम्झनु पर्छ ।

(ठ) "उत्पादक" भन्नाले उत्पादन वा निर्माण गर्ने कारोबारमा प्रत्यक्ष रुपमा वा एजेण्ट मार्फत वा सम्झौताद्वारा वा सम्झौता अन्तर्गत नियन्त्रित व्यक्ति मार्फत संलग्न व्यक्ति सम्झनु पर्छ ।

(ड) “बिक्री वितरण” भन्नाले उत्पादनको प्रवर्द्धन, वितरण, विज्ञापन, नमूना वितरण, जनसम्पर्क तथा सूचना सेवा लगायत त्यस्तो उत्पादन बजारमा ल्याउने वा बिक्री गर्ने कुनै कार्य सम्झनु पर्छ ।

(ढ) “नमूना” भन्नाले विना मूल्य प्रदान गरिने उत्पादनको एउटा वा सानो परिमाण सम्झनु पर्छ ।

(ण) “पूरक खाद्य पदार्थ” भन्नाले आमाको दूध वा आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु बच्चाको पोषण आवश्यकता पूरा गर्न अपर्याप्त भएको अवस्थामा पूरकको रुपमा प्रयोग गर्ने उपयुक्त खाद्य पदार्थ सम्झनु पर्छ ।

(त) “मन्त्रालय” भन्नाले नेपाल सरकार, स्वास्थ्य मन्त्रालय सम्झनु पर्छ ।

(थ) “तोकिएको” वा “तोकिए बमोजिम” भन्नाले यस ऐन अन्तर्गत बनेको नियममा तोकिएको वा तोकिए बमोजिम सम्झनु पर्छ ।

३. **कार्यान्वयन तथा सुपरिवेक्षण** :

(१) यो ऐन लागू गर्ने र कार्यान्वयन गर्ने मुख्य जिम्मेवारी मन्त्रालयको हुनेछ ।

(२) यो ऐनको कार्यान्वयन सुनिश्चित गर्न मन्त्रालयले आवश्यकतानुसार अन्य मन्त्रालयहरुको सहयोग लिनेछ ।

(३) यो ऐन कार्यान्वयन गर्ने प्रयोजनको लागि मन्त्रालयको काम र अधिकार देहाय बमोजिम हुनेछ :-

(क) यो ऐन कार्यान्वयन गर्न नियमहरु जारी गर्ने,

(ख) यो ऐन र यस ऐन अन्तर्गत जारी भएको नियमका प्रावधानहरुको कार्यान्वयन तथा पूर्ण पालन निश्चित गर्न सरकारी तथा गैर सरकारी निकायहरुसंग परामर्श गर्ने,

(ग) यो ऐन लागू गराउने,

(घ) यो ऐनको उद्देश्य प्राप्त गर्न आवश्यक वा सम्बन्धित यस्तै अन्य काम गर्ने ।

४. **स्तनपान संरक्षण तथा सम्वर्द्धन समिति** :

(१) यो ऐन पालन भए नभएको सुपरिवेक्षण गर्ने प्रयोजनको लागी तथा स्तनपानको संरक्षण तथा सम्वर्द्धन र उत्पादनको बिक्री वितरण नियन्त्रण गर्नको लागि नेपाल सरकारले स्तनपान संरक्षण तथा सम्वर्द्धन समिति गठन गर्नेछ ।

(२) समितिमा देहायका सदस्यहरु रहनेछन् :-

(क) सचिव,स्वास्थ्य मन्त्रालय - अध्यक्ष

(ख) प्रतिनिधि (रा.प.प्रथम श्रेणी), उद्योग मन्त्रालय - सदस्य

(ग) प्रतिनिधि (रा.प.प्रथम श्रेणी), आपूर्ति मन्त्रालय - सदस्य

(घ) प्रतिनिधि (रा.प.प्रथम श्रेणी), वाणिज्य मन्त्रालय- - सदस्य

(ङ) प्रतिनिधि (रा.प.प्रथम श्रेणी), शिक्षा तथा संस्कृति मन्त्रालय- - सदस्य

(च) प्रतिनिधि (रा.प.प्रथम श्रेणी), श्रम तथा सामाजिक कल्याण मन्त्रालय- - सदस्य

(छ) प्रतिनिधि, नेपाल बाल चिकित्सक संघ - सदस्य

(ज) प्रतिनिधि, नेपाल उद्योग वाणिज्य संघ - सदस्य

(झ) आमा तथा बच्चाको स्वास्थ्य क्षेत्रमा कार्यरत प्रतिष्ठित व्यक्तिहरु मध्येबाट समितिद्वारा मनोनीत दुई जना व्यक्ति - सदस्य

(ञ) नेपाल सरकारद्वारा मनोनीत प्रतिष्ठित पोषणविज्ञ - सदस्य

(ट) बच्चाहरुको पालन पोषण तथा स्याहार सम्बन्धी अनुभव प्राप्त आमाहरु मध्येबाट नेपाल सरकारद्वारा मनोनीत एकजना - सदस्य

(ठ) नेपाल सरकारले तोकेको व्यक्ति - सदस्य-सचिव

(३) मनोनीत सदस्यहरुको पदावधि दुई वर्षको हुनेछ र समितिले निर्धारण गरे बमोजिम पुनः मनोनीत हुन सक्नेछन् ।

(४) समितिले बैठकमा पर्यवेक्षकको रुपमा भाग लिन स्वदेशी वा विदेशी विशेषज्ञलाई आमन्त्रण गर्न सक्नेछ ।

(५) नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी समितिको सदस्यहरुमा थपघट वा हेरफेर गर्न सक्नेछ ।

५. **समितिको बैठक** :

(१) समितिको बैठक अध्यक्षको निर्देशानुसार सदस्य-सचिवले बोलाउनेछ ।

(२) समितिका दुई तिहाई सदस्यहरुको उपस्थिति भएपछि बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ ।

(३) समितिको बैठकमा प्रस्तुत कुनै विषयमा उपस्थित सदस्यहरुको बहुमतको राय समितिको निर्णय मानिनेछ ।

(४) समितिको निर्णय सदस्य-सचिवले प्रमाणित गर्नेछ ।

(५) समितिको बैठक सम्बन्धी अन्य कार्यविधि समिति आफैले निर्धारण गरे बमोजिम हुनेछ ।

६.	**समितिको काम, कर्तव्य र अधिकार** : नेपाल सरकारको स्वीकृत नीति अन्तर्गत रही समितिको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :-

(क)	यो ऐन पालन भए नभएको तोकिए बमोजिम सुपरिवेक्षण गर्ने,

(ख)	यो ऐनका प्रावधानहरु उल्लङ्घन गर्ने उत्पादक, वितरक वा स्वास्थ्य कार्यकर्ता विरुद्ध अनुसन्धान तथा मुद्दा चलाउन सिफारिश गर्ने,

(ग)	अनुदानको रुपमा कुनै उत्पादन प्राप्त गर्ने सम्बन्धी अनुरोध उपर विचार गर्ने र तोकिए बमोजिम त्यस्तो अनुरोध स्वीकृत वा अस्वीकृत गर्ने,

(घ)	उत्पादक वा वितरकबाट अनुसन्धान, छात्रवृत्ति, व्यावसायीक गोष्ठी वा सम्मेलनमा भाग लिन वा त्यस्तो गोष्ठी वा सम्मेलन गर्नको लागि सहायता लिने स्वास्थ्य कार्यकर्ताहरुको अनुरोध उपर विचार गर्ने र तोकिए बमोजिम त्यस्तो अनुरोध स्वीकृत वा अस्वीकृत गर्ने,

(ङ)	उत्पादक तथा वितरकहरुले पेश गरेको उत्पादनका लेवलहरु पुनरावलोकन गरी यस ऐनको प्रावधान अनुकूल भएका लेवलहरु स्वीकृत गर्ने,

(च)	बाल आहार सम्वन्धी सूचना तथा शैक्षिक सामग्रीहरुको प्रचार प्रसार सम्वन्धी कामको समन्वय गर्ने,

(छ)	स्तनपानको संरक्षण र सम्वर्द्धन गर्ने राष्ट्रिय नीति तर्जुमा गर्ने,

(ज)	कार्यान्वयन, सुपरिवेक्षण तथा नियन्त्रण गर्ने प्रयोजनको लागि आवश्यकतानुसार उपसमिति गठन गर्ने ।

७.	**बाल आहार सम्बन्धी सूचना र शिक्षा** :

(१)	मन्त्रालयले समितिको सल्लाह लिई बाल आहार सम्बन्धी सूचना तथा शैक्षिक सामग्रीको सम्बन्धमा प्रचार प्रसार गर्ने स्वीकृति दिनेछ ।

(२)	लेखिएको, सुन्न सकिने वा देख्न सकिने जस्तो सुकै भएपनि बाल आहार सम्बन्धी सूचना तथा शैक्षिक सामग्रीहरुले देहायका बुँदाहरुमा स्पष्ट जानकारी दिनु पर्नेछ :-

(क)	स्तनपानको फाईदा र विशिष्टता,

(ख)	आमाको पोषण लगायत स्तनपान तयार गर्ने र स्तर कायम राख्ने तरिका ।

(ग)	शिशिबाट दूध खुवाउँदा वा छुट्टै पूरक खाद्य पदार्थ खुवाउँदा स्तनपानलाई प्रतिकूल असर पार्ने कुराहरु,

(घ)	केही अवधि शिशिबाट दूध खुवाई पुनः स्तनपान गराउँदा पर्ने कठिनाई ।

(३) बच्चाहरुलाई पूरक खाद्य पदार्थ वा आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु खुवाउने विषय समावेश भएको सूचना तथा शैक्षिक सामग्रीहरुले उपदफा (२) मा उल्लेखित जानकारीको अतिरिक्त देहायका बुँदाहरु पनि प्रष्ट गर्नु पर्नेछ :-

(क) आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तुको उचित प्रयोग,

(ख) बच्चाहरुलाई स्तनपान गराउँदा लाग्ने खर्चको दाँजोमा आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु खुवाउँदा लाग्ने खर्च,

(ग) आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तुको अनुचित तयारीबाट तथा अनुपयुक्त खाना खुवाउँदा र शिशिबाट खुवाउँदा स्वास्थ्यमा पर्ने खराबी,

(घ) बच्चाहरुलाई कचौरा र चम्चाबाट खुवाउने तरिका।

(ङ) घरमा पूरक खाद्य पदार्थ तयार गर्ने तरिका।

(४) सूचना तथा शैक्षिक सामग्रीमा ठीक र प्रचलित जानकारी मात्र हुनु पर्नेछ र स्तनपानलाई दुरुत्साहन गर्ने वा शिशिबाट खुवाउने बानीलाई प्रोत्साहन गर्ने खालका कुनै तस्वीर वा व्यहोरा प्रयोग गर्नु हुँदैन।

८. <u>**स्वास्थ्य हेरचाह गर्ने निकाय तथा स्वास्थ्य कार्यकर्ता**</u> :

(१) स्वास्थ्य हेरचाह गर्ने निकायका प्रमुखहरु तथा राष्ट्रिय र स्थानीय स्वास्थ्य अधिकारीहरुले यो ऐनको सिद्धान्तलाई प्रवर्द्धन गर्न तथा स्तनपानलाई संरक्षण र प्रोत्साहन गर्न उपयुक्त उपायहरु अपनाउनु पर्नेछ र स्वास्थ्य कार्यकर्ताहरुलाई तिनीहरुको जिम्मेवारीको सम्बन्धमा उपयुक्त जानकारी एवं सल्लाह दिनु पर्नेछ साथै स्वास्थ्य कार्यकर्तालाई दफा ७ मा उल्लेखित सबै कुराहरुको जानकारी निश्चित रुपमा दिनु पर्नेछ।

(२) स्वास्थ्य कार्यकर्ताहरुले स्तनपानलाई संरक्षण, सम्वर्द्धन र प्रोत्साहन गर्नु पर्नेछ। तिनीहरुले यो ऐनका प्रावधानहरु खासगरी दफा ७ मा उल्लेखित कुराहरुको जानकारी राखी यथासम्भव ती प्रावधानहरु कार्यान्वयन गर्नु पर्नेछ।

(३) स्वास्थ्य कार्यकर्ताहरुले प्रत्यक्ष वा अप्रत्यक्ष रुपमा स्तनपानको प्रारम्भ र विस्तारलाई रोक्ने काम गर्न दिनु हुँदैन।

(४) स्वास्थ्य कार्यकर्ताहरुले उत्पादक वा वितरकबाट कुनै पनि किसिमले आर्थिक वा भौतिक उपहार स्वीकार गर्नु हुँदैन।

(५) स्वास्थ्य कार्यकर्ताहरुले कसैलाई कुनै उत्पादनको नमूना दिनु हुँदैन।

(६) स्वास्थ्य कार्यकर्ताहरुले कुनै पनि तरिकाले उत्पादनको प्रवर्द्धन गर्नु हुँदैन।

(७) स्वास्थ्य कार्यकर्ताहरुलाई उत्पादक वा वितरकले कुनै उपहार वा अन्य आर्थिक सुविधा दिन खोजेको वा कसैले यस ऐनको अन्य कुनै प्रावधान उल्लङ्घन गरेको जानकारी हुन आएमा सो को प्रतिवेदन लिखित रुपमा आफनो संस्थाको प्रमुखलाई दिनु पर्नेछ र प्रमुखले पनि सो कुरा यथाशीघ्र समितिलाई जानकारी गराउनु पर्नेछ ।

९. <u>उत्पादक तथा वितरकले गर्नु नहुने कार्य</u> :

(१) उत्पादक वा वितरकले देहाय बमोजिम हुनेगरी कुनै विज्ञापन गर्नु हुँदैन :-

(क) कुनै उत्पादनको प्रवर्द्धन हुने गरी,

(ख) शिशिबाट खुवाउनु स्तनपान गराउनु बराबर छ वा त्यो भन्दा विशिष्ट छ भन्ने जनाउने गरी वा विश्वास पर्ने गरी ।

(२) यस दफाको प्रयोजनको लागि विज्ञापन भन्नाले देहाय बमोजिम गरिएको सबै विज्ञापनलाई जनाउनेछ :-

(क) कुनै प्रकाशनद्वारा वा टेलीभिजन, रेडियो, फिल्म, भिडियो वा टेलिफोनद्वारा,

(ख) सङ्केत, बिलबोर्ड, सूचना वा सामानहरुको प्रदर्शनद्वारा,

(ग) तस्वीर वा प्रतिमाहरुको प्रदर्शनीद्वारा,

(घ) अन्य कुनै तरिकाले ।

(३) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि स्वास्थ्य व्यवसायीहरुकहाँ मात्र पुग्ने प्रकाशनहरुमा उत्पादनको विज्ञापन गर्न सकिनेछ ।

तर त्यस्तो विज्ञापन तथ्यपूर्ण र वैज्ञानिक कुराहरुमा मात्र सीमित हुनु पर्नेछ र शिशिबाट खुवाउनु स्तनपान गराउनु बराबर छ वा त्यो भन्दा विशिष्ट छ भन्ने विश्वास उत्पन्न गर्ने खालको हुनु हुँदैन र त्यस्तो विज्ञापनमा दफा ७ मा उल्लेखित जानकारी समावेश हुनु पर्नेछ ।

(४) उत्पादक वा वितरकले कसैलाई पनि उत्पादनको नमूनाहरु दिन वा वितरण गर्नु हुँदैन ।

(५) उत्पादक वा वितरकले स्वास्थ्य हेरचाह गर्ने निकाय भित्र कुनै उत्पादनको प्रवर्द्धन गर्नु हुदैन ।

(६) यस दफाको प्रयोजनको लागि प्रवर्द्धन भन्नाले देहायको तरीका लगायत कुनै तरीकाले कुनै व्यक्तिलाई उत्पादनको परिचय दिनु वा उत्पादनसित परिचित गराउनु सम्झनु पर्छ :-

(क) विज्ञापन गरी,

(ख) उत्पादक वा वितरकको नाम वा प्रतीक चिन्ह (लोगो) वा प्रोप्राइटरी उत्पादनको नाम, प्रतीक चिन्ह, ग्राफिक वा अन्य प्रतिरुप भएको किताब, पर्चा वा पोष्टर लगायतका छापिएका वस्तुहरु प्रयोग गरी,

(ग) उत्पादक वा वितरकको नाम वा प्रतीक चिन्ह वा प्रोप्राइटरी उत्पादनको नाम, प्रतीक चिन्ह, ग्राफिक वा अन्य प्रतिरुप भएको कुनै चीज नगण्य वा विना मूल्यमा दिई वा वितरण गरी,

(घ) उत्पादनहरु प्रदर्शन गरी वा

(ङ) अन्य कुनै तरिकाले।

(७) उत्पादक वा वितरकले स्वास्थ्य हेरचाह गर्ने निकाय वा अन्य कुनै संस्था वा संगठनले तोकिएको ढाँचामा अनुदान मागेमा र त्यस्तो मागलाई तोकिए बमोजिम समितिले स्वीकृत गरेमा बाहेक स्वास्थ्य हेरचाह गर्ने निकाय वा अन्य कुनै संस्था वा संगठनलाई खुद्रा मूल्य भन्दा कम मूल्यमा उत्पादन उपलब्ध गराउन वा दान गर्न हुँदैन।

(८) उत्पादक वा वितरकले आफनो व्यापार बढाउन वा त्यस्तो उद्देश्यले स्वास्थ्य हेरचाह गर्ने निकाय भित्र जनसाधारणसंग सम्पर्क राख्नु हुँदैन।

(९) उत्पादक वा वितरकले समितिको स्वीकृति नलिई स्वास्थ्य हेरचाह गर्ने निकायलाई कुनै उपकरण वा वस्तुहरु दान दिनु हुँदैन।

(१०) उत्पादक वा वितरकले स्वास्थ्य कार्यकर्तालाई कुनै उपहार दिन वा आर्थिक वा अन्य फाईदा गराउन हुँदैन।

(११) उत्पादक वा वितरक वा स्वास्थ्य कार्यकर्ताले तोकिएको ढाँचामा अनुरोध गरेमा र त्यस्तो अनुरोधलाई समितिले तोकिए बमोजिम स्वीकृत गरेमा बाहेक स्वास्थ्य कार्यकर्तालाई छात्रवृत्ति वा अनुसन्धान अनुदान दिन वा व्यावसायिक गोष्ठी वा सम्मेलन आयोजना गर्न वा सम्मेलनमा स्वास्थ्य कार्यकर्ताले भाग लिन चाहिने रकम दिन हुँदैन।

१०. **उत्पादनको प्रमाणीकरण** :

(१) उत्पादक वा वितरकले दूधदानी र मुन्टो बाहेक अन्य कुनै उत्पादन नेपालमा बिक्री गरिनु अघि केन्द्रीय खाद्य अनुसन्धानशालाबाट जाँच गराई प्रमाणीकरण लिनु पर्नेछ।

(२) नेपालमा बिक्रीमा ल्याई सकेको उत्पादनको हकमा यो ऐन प्रारम्भ भएको मितिले नब्बे दिन भित्र उत्पादक वा वितरकले केन्द्रीय खाद्य अनुसन्धानशालाबाट प्रमाणीकरण लिनु पर्नेछ।

(३) उपदफा (१) र (२) को प्रयोजनको लागि उत्पादक वा वितरकले उत्पादनको नमूना र आवश्यक दस्तुर सहित तोकिएको ढाँचामा केन्द्रीय खाद्य अनुसन्धानशालामा दरखास्त दिनु पर्नेछ ।

११. <u>**लेवल लगाउने**</u> :

(१) कुनै उत्पादन नेपालमा बिक्री गरिनु अघि उत्पादक वा वितरकले तोकिए बमोजिमको दर्खास्त साथ त्यस्तो उत्पादनको लेवल स्वीकृतिको लागि समिति समक्ष पेश गर्नु पर्नेछ ।

(२) नेपालमा बिक्रीमा ल्याई सकेको उत्पादनका हकमा यो ऐन प्रारम्भ भएको मितिले नब्बे दिन भित्र उत्पादक वा वितरकले त्यस्तो उत्पादनको लेवलको लागि समितिको स्वीकृति लिनु पर्नेछ ।

(३) उत्पादनको लेवल उत्पादनको उपयुक्त प्रयोग बारे आवश्यक जानकारी दिने र स्तनपानलाई दुरुत्साहन नगर्ने किसिमले तयार गरेको हुनु पर्नेछ ।

(४) उत्पादनको लेवल वा भाँडोमा तयारी गर्ने तरिका व्याख्या गर्ने ग्राफीक बाहेक कुनै तस्वीर, नक्सा वा अन्य प्रतिरुप देखाउनु हुँदैन ।

(५) उत्पादनको लेवलमा उत्पादक तथा सम्भव भए वितरकको पनि नाम र ठेगाना हुनु पर्नेछ ।

(६) आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु वा यो ऐनको परिधि भित्र पर्ने अन्य दुग्ध पदार्थको भाँडोमा वा भाँडाबाट छुट्टिन नसक्ने लेवलमा नेपाली भाषामा देहायका सबै जानकारी सहितको सफा, स्पष्ट एवं सजिलै संग बुझ्न सकिने सन्देश छापिएको हुनु पर्नेछः-

(क) जरुरी सूचना भन्ने शब्दहरु वा त्यस्तै किसिमको अन्य कुरा,

(ख) बच्चाहरुको लागि स्तनपान सबैभन्दा असल दूध हो भन्ने व्यहोरा,

(ग) आवश्यकता र प्रयोग गर्ने तरिकाको सम्बन्धमा स्वास्थ्य कार्यकर्ताको सल्लाह बिना उत्पादन प्रयोग गर्न नहुने व्यहोरा,

(घ) सजिलै संग बुझ्न सकिने ग्राफीक वा शब्दमा उपयुक्त तयारी गर्ने निर्देशन र

(ङ) प्रत्येक महीना बच्चालाई राम्ररी खुवाउन आवश्यक आमाको दूधलाई प्रतिस्थापन गर्ने वस्तु वा अन्य दुग्ध पदार्थको परिमाण ।

(७) मानवीकरण, जननीकरण वा त्यस्तै किसिमको अन्य शब्दहरु प्रयोग गर्नु हुँदैन ।

(८) बालसूत्रको सबै पोषण आवश्यकता पूरा नगर्ने तर त्यसको लागि परिवर्तन गर्न सकिने प्रकारको दूधको लेवलमा वा भाँडोको बाहिरबाट देखिने गरी राखिएको कुनै चिजमा सो

उत्पादन मात्र बच्चाहरुको पोषणको एकमात्र श्रोत हुन नहुने र स्वास्थ्य कार्यकर्ताको दिग्दर्शन बमोजिम बाहेक बच्चाहरुलाई खुवाउन प्रयोग गर्न नहुने चेतावनी हुनु पर्नेछ ।

(९) गुलियो पारेको जमाएको (स्वीटेन्ड कन्डेन्स) दूधको लेवलमा यी बच्चालाई खुवाउनको लागि प्रयोग गर्नु हुँदैन भन्ने सफा र स्पष्ट चेतावनी हुनु पर्नेछ ।

(१०) दूधदानी र मुन्टो बाहेक अन्य उत्पादनको लेवलमा देहायका कुराहरु पनि उल्लेख हुनु पर्नेछ :-

(क) साधकहरु,

(ख) उत्पादनको विश्लेषण र बनावट,

(ग) सञ्चय गर्दा पालन गर्नु पर्ने शर्त,

(घ) ब्याच संख्या, संचय स्थिति, उत्पादन मिति र मौसमी अवस्थालाई विचार गरी उत्पादन उपभोग गरी सक्नु पर्ने मिति ।

(११) दूधदानी र मुन्टोको लेवलमा उत्पादक तथा वितरकको नाम र ठेगानाको अतिरिक्त आमाको दूध नै बच्चाहरुको निमित्त सवैभन्दा असल दूध हो र शिशिबाट ख्वाउनु भन्दा कचौरा र चम्चाबाट ख्वाउनु सुरक्षित छ भन्ने कुरा उल्लेख हुनु पर्नेछ ।

१२. **गुण** :

(१) उत्पादनहरु निर्माण गर्दा, बिक्री गर्दा वा अन्य किसिमले वितरण गर्दाको अवस्थामा नेपाल गुणस्तर कार्यालयबाट निर्धारित वा सिफारिश गरिएको गुणस्तर अनुसारको हुनु पर्नेछ ।

(२) केन्द्रीय खाद्य अनुसन्धानशालालाई नेपालमा बिक्री गरिएको कुनै उत्पादन मानवको लागि उपभोग योग्य छ छैन परीक्षण गर्ने अधिकार हुनेछ ।

(३) उत्पादित देशमा प्रयोगको लागि सुरक्षा स्तर नपुग्ने उत्पादन नेपालमा बिक्री गर्न पाईदैन ।

(४) अन्तिम मिति पुगेको उत्पादन बजारमा ल्याउन, बिक्री गर्न वा वितरण गर्न हुँदैन ।

(५) गुणको ह्रास, मिलावट र दूषित हुन नदिन दूधदानी र मुन्टो बाहेक अन्य उत्पादन मूल भाँडोमा मात्र बिक्री गर्नु पर्नेछ ।

१३. **निरीक्षण** :

(१) उत्पादक, वितरक, स्वास्थ्य हेरचाह गर्ने निकाय तथा स्वास्थ्य कार्यकर्ताहरुबाट यो ऐन वा यस ऐन अन्तर्गत बनेका नियम पालन भए नभएको सम्बन्धमा निरीक्षण तथा जाँचबुझ गरी आवश्यक कारबाही गर्ने प्रयोजनको लागि समितिको सिफारिशमा मन्त्रालयले

आवश्यक संख्यामा निरीक्षकहरु नियुक्त गर्न वा नेपाल सरकारको सम्बन्धित निकायको स्वीकृति लिई कर्मचारीहरुलाई निरीक्षक भई काम गर्न तोक्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम नियुक्त भएको वा तोकिएको निरीक्षकले उत्पादक, वितरक, स्वास्थ्य हेरचाह गर्ने निकाय तथा स्वास्थ्य कार्यकर्ताहरुले यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम पालन गरेको छ छैन तोकिए बमोजिम निरीक्षण तथा जाँचबुझ गरी त्यस्को प्रतिवेदन समितिमा पेश गर्नु पर्नेछ ।

१४. **अनुज्ञापत्र, अनुमतिपत्र वा अख्तियारी, निलम्वन वा रद्द गर्न सकिने** : दफा १३ को उपदफा (२) बमोजिम निरीक्षकले पेश गरेको प्रतिवेदनबाट कुनै उत्पादक, वितरक, स्वास्थ्य हेरचाह गर्ने निकाय वा स्वास्थ्य कार्यकताले यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम पालन नगरेको देखिएमा समितिको सिफारिसमा मन्त्रालयले तिनीहरुले आÇनो कारोबार वा व्यवसाय गर्न नेपाल सरकार वा अन्य कुनै निकायबाट पाएको अनुज्ञापत्र, अनुमतिपत्र वा अख्तियारी, निलम्बन वा रद्द गर्न सम्बन्धित निकायलाई लेखी पठाउन सक्नेछ ।

१५. **निरीक्षकको काम र अधिकार** : यस ऐनमा लेखिए देखि बाहेक निरीक्षकको अन्य काम र अधिकार तोकिए बमोजिम हुनेछ ।

१६. **दण्ड सजाय** :

(१) दफा ८ को उपदफा (४), (५) वा (६) उल्लङ्घन गर्ने स्वास्थ्य कार्यकर्तालाई एकहजार रुपैयाँसम्म जरिवाना वा एक महीनासम्म कैद वा दुवै सजाय हुनेछ ।

(२) दफा ९ को उपदफा (१), (४), (५), (७), (८), (९), (१०) वा (११) उल्लङ्घन गर्ने उत्पादक वा वितरकलाई दशहजार रुपैयाँसम्म जरीबाना वा तीन महीनासम्म कैद वा दुवै सजाय हुनेछ ।

(३) दफा १० वा ११ उल्लङ्घन गर्ने उत्पादक वा वितरकलाई पन्ध्रहजार रुपैयाँसम्म जरीबाना वा चार महीनासम्म कैद वा दुवै सजाय हुनेछ ।

(४) उपदफा (१), (२) वा (३) मा लेखिए देखि बाहेक यो ऐनका अन्य प्रावधानहरु वा यस ऐन अन्तर्गत बनेको नियम उल्लङ्घन गर्ने व्यक्तिलाई कसूरको प्रकृति हेरी दुईहजार रुपैयाँ सम्म जरीबाना वा एक महीनासम्म कैद वा दुबै सजाय हुनेछ ।

(५) अदालतले यस दफा बमोजिम कुनै व्यक्तिलाई कुनै कसूर गरे बापत सजाय गर्दा त्यस्तो कसूरबाट क्षति पुगेको व्यक्ति वा निजको हकदारलाई त्यस्तो कसूर गर्ने व्यक्तिबाट पच्चीसहजार रुपैयाँ देखि एकलाख रुपैयाँ सम्म क्षतिपूर्ति समेत भराई दिन सक्नेछ ।

१७. **फर्म वा संगठित संस्थाको दायित्व** : कुनै फर्म वा संगठित संस्थाले यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम उल्लङ्घन गरेमा त्यसरी उल्लङ्घन गर्ने कुनै फर्म भए फर्मको धनी वा साझेदार र कुनै संगठित संस्था भए सो संस्थाको कामकाज गर्ने मुख्य प्रशासकीय अधिकारी दफा १६ बमोजिमको सजायको भागी हुनेछ ।

१८. **सरकार वादी हुने** : यस ऐन अन्तर्गतको मुद्दा नेपाल सरकार वादी हुनेछ ।

१९. **मुद्दाको तहकिकात र दायरी** :

(१) यस ऐन बमोजिम सजाय हुने कसूर सम्बन्धी मुद्दाको तहकिकात निरीक्षकले गर्नेछ र त्यस्तो तहकिकात र त्यस्तो तहकिकातको काम पूरा भएपछि जिल्ला अदालतमा मुद्दा दायर गर्नेछ ।

(२) उपदफा (१) बमोजिम मुद्दा तहकिकात र दायर गर्दा निरीक्षकले सरकारी वकीलको राय लिन सक्नेछ । मुद्दा दायर भएपछि मुद्दाको बहस पैरवी सरकारी वकीलले गर्नेछ ।

२० **नियम बनाउने अधिकार** : यस ऐनको उद्देश्य कार्यान्वयन गर्न नेपाल सरकारले आवश्यक नियम बनाउन सक्नेछ ।